# 𑐣𑐾𑐥𑐵𑐮 𑐮𑐶𑐥𑐶-𑐥𑑂𑐬𑐎𑐵𑐱

# नेपाल लिपि-प्रकाश

नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

# नेपाल लिपि-प्रकाश

हेमराज शाक्य

नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान
काठमाडौं, नेपाल

# भूमिका

नेपालका प्राचीन संस्कृति र ज्ञान–विज्ञानका भण्डार भएका पुस्तकालय (जस्तो वीर पुस्तकालय, हाल राष्ट्रिय अभिलेखालय), संग्रहालय (जस्तो छाउनी म्यूजियम, हाल राष्ट्रिय संग्रहालय), प्राचीन राजप्रासाद (जस्तो हनुमान ढोका) इत्यादि राणाशासकहरूका पालामा उनीहरूका प्रियपात्र भएका विदेशी विद्वान् र अन्वेषकहरूको निमित्त सदा खुला भए पनि, नेपाली विद्वान् र अन्वेषकहरूको निमित्त बन्द नै थिए । अर्थात् भन्नुको तात्पर्य यो हो कि राणाशासकहरूलाई रिझाएर नेपालभित्र पस्न अनुमति पाएका विदेशी विद्वान्हरूले मात्र नेपालको संस्कृति र इतिहाससम्बन्धी अन्वेषण र अध्ययन गर्ने एकाधिकार झैं पाए, अरू चाहिं वञ्चित भए । त्यसवेला कुनै नेपाली विद्वान्ले नेपालभित्र बसी नेपालसम्बन्धी ऐतिहासिक तथ्यहरू अन्वेषण र अनुसन्धान गरी प्रकाशमा ल्याउने हिम्मत गर्न सकेनन् । एक त सम्भव पनि थिएन, सम्भव नै भएमा पनि "मर्कै पर्व " झैं एक पर्व उब्जिहाल्थ्यो । यसैले स्कूल कलेजमा समेत नेपाली इतिहासको पठनपाठन एक किसिमले वर्जित नै थियो । केवल एक दुई घरानिया भाइ भारादार तथा लब्धप्रतिष्ठ विद्वान्हरूका घरमा हस्तलिखित वंशावलीहरूसम्म सुरक्षित अवस्थामा हुन्थे । इतिहास र संस्कृतिका अधिकांश सामग्रीहरूचाहिं विभिन्न रूप र अवस्थामा यत्र तत्र असुरक्षित अवस्थामा नै मिल्किएका हुन्थे ।

२००७ सालको क्रान्तिपछि जब प्रजातन्त्रको उदय भयो त्यस बेलादेखि भने नेपालको इतिहास र संस्कृतिको अन्वेषण र अनुसन्धान, अध्ययन र विश्लेषण, प्रचार र प्रसार गर्ने क्षेत्रमा पनि नौला नौला प्रयासहरू देखा परे । नेपालका ऐतिहासिक र सांस्कृतिक निधिहरूको अन्वेषण र अध्ययन गर्ने सौभाग्य सबैले पाए । नेपाली इतिहास र संस्कृतिप्रतिको अध्ययनमा जनरुचि बढ्न थाल्यो । पूर्वी इतिहास र संस्कृतिमा अभिरुचि राख्ने विदेशी विद्वान् र अन्वेषकहरूको दृष्टि नेपालमा केन्द्रित भयो । यता नेपाली विद्वान्, अन्वेषक तथा इतिहास र संस्कृतिका विद्यार्थीहरूको ध्यान पनि नेपाली इतिहास र संस्कृतिको खोज र अध्ययनमा विशेषतः आकर्षित हुन थाल्यो । फलतः नेपाली इतिहास, संस्कृति, साहित्य तथा पुरातत्वका क्षेत्रमा यत्र तत्र छरिएका सामग्रीहरूको खोजी र अध्ययन आवश्यक र अनिवार्य भयो, यस क्षेत्रमा प्रशस्त सामग्रीहरू देखा पर्न पनि थाले । तर, नेपाल अधिराज्यभित्र छरिएका यस किसिमका महत्वपूर्ण एवं अमूल्य सामग्रीहरू जस्तो कीर्तिस्तम्भ लेख, शिलालेख, सुवर्णपत्र, ताम्रपत्र, ताडपत्र, काष्ठपत्र, इष्टिकापत्र, भुर्जपत्र, हस्तलिखित ग्रन्थ, विभिन्न धातु मुद्रा आदि आदिमा विभिन्न प्राचीन लिपि नै लेखिएका हुन्थे । यस किसिमका महत्वपूर्ण ऐतिहासिक, सांस्कृतिक र पुरातात्विक सामग्रीहरूको अन्वेषण, अध्ययन र अनुसन्धानका निमित्त विभिन्न प्राचीन लिपिको ज्ञान अत्यावश्यक र अनिवार्य नै भयो, अझ समयानुसार क्रमशः परिवर्तित हुंदै गैरहेको लिपि विकास क्रमको ज्ञान पनि । लिपि र लिपि विकासको ज्ञानको अभावमा तथा अपरिपक्वतामा तथा एक थोक लेखिएकोमा अर्को थोक पढिन जाँदामा अर्थको अनर्थ हुन जाने तथा मितिको निर्धारण आदिमा आकाश पातालको फरकसमेत पर्न जाने भयो । अतः नेपालका इतिहास, संस्कृति र पुरातत्वको क्षेत्रमा लिपि ज्ञान र लिपिविशेषज्ञहरूको आवश्यकता बढ्न थाल्यो । लिपि विशेषज्ञहरूले यी क्षेत्रहरूमा महत्वपूर्ण सेवा प्रदान गरे तथा अनेकन खोजपूर्ण कार्यद्वारा नौला प्रकाशहरू ल्याए ।

यस प्रसङ्गमा हाम्रो निमित्त विभिन्न लिपिहरूको विवरण र विकास क्रमको सुगम जानकारी दिने लिपिविषयक एउटा सर्वाङ्गीण गहकिलो पुस्तक (Nepalese Palaeography) को ज्यादै ठूलो अभाव महसूस हुन थाल्यो। हुन त नेपाल एक सानो देश हो, तर हिमवत्खण्डमा अवस्थित यो देशको इतिहास, संस्कृति, पुरातत्व तथा अनेक ज्ञान–विज्ञानको क्षेत्रमा निकै उच्च स्थान रहिआएको छ। यहां समय समयमा अनेक प्रकारका लिपिहरूको विकास भयो। यहांका लिपिहरू उदाहरणार्थ रञ्जना र कूटाक्षर तिब्बत, चीन, मंगोलिया आदि देशहरूमा समेत प्रचलन हुन पुगे।

विशेषत: हाम्रो देशमा पुरातत्वको महत्व र गतिविधि बढ्नुको साथै अनेक पुरातात्विक उपलब्धिहरू पनि देखा पर्न थालेपछि, तथा त्रिभुवन विश्व विद्यालयमा प्राचीन इतिहास र संस्कृतिको पठनपाठन चालू भएपछि प्राचीन लिपिविषयक एक प्रामाणिक पुस्तकको खांचो भैरहेको थियो। इतिहास र संस्कृतिप्रेमी विद्वान् र अन्वेषकहरूको निमित्त त यस किसिमको पुस्तकको नितान्त दरकार परिरहेकै थियो। अनि यही अभाव पूर्ति गर्नुको निमित्त नेपाल राजकीय प्रज्ञा–प्रतिष्ठानले प्रस्तुत पुस्तक प्रकाशनमा ल्याउने आयोजना गरेको हो।

यो पुस्तक विशेषत: नेपालसम्बन्धी अन्वेषण गर्ने विद्वद्‌वर्ग, इतिहासकारहरूलाई तथा नेपालको इतिहास, संस्कृति र पुरातत्त्वका विद्यार्थीहरूलाई ज्यादै उपयोगी सिद्ध हुनेछ। अझ यो पुस्तकले सर्वसाधारण जनतामा पनि प्राचीन लिपिको महत्व र विशेषताको जानकारी दिनेछ तथा यसको माध्यमबाट यत्र तत्र मिल्किएका शिलास्तम्भ, शिलालेख, सुवर्णपत्र, ताम्रपत्र, हस्तलिखित ग्रन्थहरूको सुरक्षा एवं संरक्षण गरिनुपर्दछ भन्ने राष्ट्रिय भावनालाई उद्‌बोधित गरी बलियो टेवा पनि दिनेछ।

अन्त्यमा, नेपाल राजकीय प्रज्ञा–प्रतिष्ठान, संस्कृति उपविभाग नं. २ को परियोजनाबमोजिम अथक परिश्रम गर्नु भई यो पुस्तक लेखिदिनुभएकोमा लिपिविशेषज्ञ श्री हेमराज शाक्यज्यूलाई प्रज्ञा–प्रतिष्ठानको तर्फबाट म विशेष धन्यवाद ज्ञापन गर्दछु र आशा गर्दछु नेपालको इतिहास, संस्कृति र पुरातत्वको क्षेत्रमा श्री शाक्यज्यूबाट यस्तै किसिम अमूल्य सेवा सतत भइनै रहनेछ।

सत्यमोहन जोशी
आयोजक
संस्कृति उपविभाग नं. २
ने. रा. प्र. प्र.

२०३० फागुन

# प्राक्कथन

सर्वोच्च हिमालय मणिमुकुट भएको हाम्रो सुन्दर शान्त विशाल नेपालमा विभिन्न देवदेवता र मानव जातिको बसोबास छ । प्रत्येक जातिका भिन्नभिन्न भाषा र रीतिस्थितिरिबाज छन् । विभिन्न जातिका विभिन्न प्रकारका संगीत नृत्य कला प्रचलित छन् । विभिन्न जातिका विभिन्न किसिमका किंवदन्ती र दन्त्यकथा छन् । विभिन्न ठाउँमा विभिन्न प्रकारका मेला यात्राहरू छन् । विभिन्न जातिका आफ्ना आफ्ना भाषा छन् । अनि आफ्नो मनोभाव अभिव्यक्त गर्न भाषाको आवश्यकता भए झैं, त्यही भाषा तथा भावासंग सम्बन्धित साहित्यलाई यथावत् सुरक्षित गर्न लिपिको माध्यमको सर्वोपरि भूमिका हुन्छ ।

हाम्रो देशको सभ्यता, संस्कृति, कलाकौशल तथा ज्ञान विज्ञानको इतिहास, कथा र पुराणको आधारमा भन्ने हो भने अनन्तकालदेखिनै चलिआएको विदित हुन्छ । तथापि प्राचीन लिपिबद्ध प्रमाण भने दुर्लभ छ । तर आजको वैज्ञानिक युगमा पौराणिक कथाको लेखमाथि मात्र गौरव गरेर सन्तोष गर्नु तथा विश्वास राख्नु उचित हुंदैन । हामीलाई आफ्नो अतीतकालको गौरव एवं प्रशंसा सुन्नुभन्दा आफ्नै आँखाले अवशेषकै रूपमा भए पनि अवलोकन गर्न पाउनु सार्थक हुन्छ । हाम्रा प्राचीन राजा अंशुवर्माको कैलासकूट भवनलाई चिनिया यात्रीहरूले मुक्तकण्ठले प्रशंसा गरेका छन् । हाम्रा इतिहासमा पनि यसको वर्णन पाइन्छ । स्वयं राजा अंशुवर्माले पनि यस भवनलाई "क्षितितलतिलक र कुतूहलिजनतानिमेषनयनावलोक्यमान" आदि वाक्यले प्रशंसा गरेका थिए । परन्तु यस कैलासकूट भवनको अवशेषसम्म पनि हामीले भेट्न सकेका छैनौं । यस्तै 'भद्राधिवास भवन' एवं 'मानगृहको' पनि उही अवस्था छ । यी ऐतिहासिक समस्याहरू सुल्झाउनको लागि पुरातत्त्ववेत्ताहरू प्राचीन महत्वपूर्ण भवनको खण्डहरहरूको अनुसन्धान गर्छन्,साथसाथै ती ठाउँबाट प्राप्तहुने भग्नावशेषहरूको सुरक्षा तथा संचय गर्नुको अतिरिक्त पुरातात्त्विक प्रक्रियाद्वारा तिनको विश्लेषण गरी ती सबको महत्व जनसमक्ष प्रकाशमा ल्याइदिन्छन् । कारण "जननी जन्मभूमिश्च स्वर्गादपि गरीयसी" भने झैं आफ्नो देशको सभ्यता र संस्कृति भनेको सबैलाई आफ्नो प्राणभन्दा पनि प्यारो हुन्छ । यस सन्दर्भमा, स्वर्गीय श्री ५ महेन्द्रको महान् वाणीको सम्झना हुन आउँछ–त्यो हो–"नेपालको अस्तित्व मेटियो भने नेपालीको अस्तित्व पनि मेटिन्छ ।" अनि सभ्यता र संस्कृतिको इतिहास तथा त्यसका विकासक्रम र पुरातात्त्विक महत्व बुझाउन जुन पुरातात्त्विक वस्तुमा अंकित विभिन्न सांकेतिक एवं प्राचीन लिपिहरूको अध्ययन गरिन्छ, त्यही लिपिको अर्थ प्रतिपादनको निमित्त प्राचीन लिपिको अनुसन्धान बडो महत्वपूर्ण विषय भएको छ ।

प्राचीन लिपिलाई अर्को दृष्टिले हेर्ने हो भने हाम्रा प्रातःस्मरणीय पूर्वाचार्यहरूले उच्चकोटिमा पुऱ्याएको साहित्य र संस्कृति अध्ययन गर्ने यो प्रथम खुड्किलो भएको छ । साँचै भनूँ भने प्राचीन लिपि नै प्राचीन साहित्य भण्डारको मूलद्वार उघार्ने साँचो हो ।

नेपाल अधिराज्यभित्र पुरातात्विक एवं ऐतिहासिक सामग्रीहरू यत्र तत्र देखापर्छन् । प्राचीन स्मारक, खण्डहरहरू, भग्नावशेष, देवस्थल, विहार, चैत्य, स्तूप, राजप्रासाद, किल्ला कोट, कीर्तिस्तम्भ, शिलापत्र, तालपत्र, भूजापत्र, नीलपत्र, ताम्रपत्र, सुवर्णपत्र, इष्टिकापत्र तथा सिक्का एवं पाण्डुलिपिमा विभिन्न प्रकारका लिपिहरू उत्कीर्ण गरिएका पाइन्छन् ।

प्रस्तुत पुस्तकमा ती विभिन्न प्रकारका लिपिहरूको वर्णमाला यथासक्य समावेश गर्ने र ती लिपिहरूको पनि संक्षिप्त परिचय प्रकाशमा ल्याउने प्रयास गरिएको छ ।

## ब्राह्मी लिपि

नेपालका आजसम्म प्राप्त हुन आएका विविध प्रकारका लिपिहरूमध्ये सबैभन्दा प्राचीन लिपि ब्राह्मी लिपि हो । यस लिपिलाई अशोक लिपि पनि भन्दछन् । सम्राट् अशोकले यस लिपिमा अनेक अभिलेखहरू भारतवर्ष र अन्य ठाउँमा स्थापित गरेका हुनाले यो लिपिको व्यापक रूपमा प्रचार र प्रसार भयो ।

यो लिपि आजसम्मको अन्वेषण तथा उत्खननको परिणामस्वरूप नेपाल अधिराज्यभित्र (लुम्बिनी अञ्चलभित्र) केवल दुई ठाउँमा पाइएको छ । यस शिलास्तम्भमा सम्राट् अशोकको शुभ राज्याभिषेकलाई लिएर सम्वत्सर व्यवहार गरेको विदित हुन्छ । सोही राज्याभिषेकको वर्ष गणनानुसार यो वि. सं. पूर्व २२६ देखि २३२ सम्मको पुरानो हो भन्ने विदित हुन्छ ।

ब्राह्मीलिपि अङ्कित अभिलेख प्राप्त स्थान :

(१) निग्लीहवा स्थित विशाल पुष्करणीको किनारमा अवस्थित अशोकस्तम्भ ।
(२) बुद्ध शाक्यमुनिको जन्मभूमि लुम्बिनी स्थित अशोक स्तम्भ ।

## पूर्व लिच्छवि लिपि

नेपालमा गोपालवंशी, महिषपालवंशी एवं किरातवंशी राजाहरूको शासन अन्त भै सकेपछि लिच्छवि शासन शुरू भयो । यो लिच्छवि शासन पनि पूर्वार्द्ध तथा उत्तरार्द्ध दुई भागमा विभाजित छन् । अनि पूर्वलिच्छवि कालमा प्रचलित भएको लिपिलाई पूर्व लिच्छवि लिपि भन्ने चलन छ । पूर्व लिच्छवि लिपिको गुप्ताक्षरसंग प्रायः सामञ्जस्य भए तापनि यस लिपिलाई ब्राह्मीलिपिको द्वितीय रूप मानिएको छ ।

यो लिपि वि. सं. ४ रौं शताब्दीदेखि लिएर ७ तौं शताब्दीको उत्तरार्द्धसम्म प्रचलित भएको प्रमाणित हुन्छ । प्रमाण स्वरूप यसका केही उदाहरण यस प्रकार छन् :

(१) स्वयम्भूस्थित शिलापत्र (शंक) र देव ।
(२) चांगुनारायणस्थित शिलास्तम्भ सं. ३८६ मानदेव (प्रथम) ।
(३) लाजिम्पाटस्थित विष्णुविक्रान्त मूर्तिको पादपीठ लेख सं. ३८९ ।
(४) पलान्चोकस्थित विजयश्री भगवती पादपीठ लेख सं. ४२५ ।
(५) राष्ट्रिय अभिलेखालयको दश भूमीश्वर, रत्नकेतु सूत्र प्रकीर्ण तालपत्र ।

## उत्तर लिच्छवि लिपि

पूर्वलिच्छवि लिपि (गुप्ताक्षर) पछिको उत्तरलिच्छवि लिपि (कुटिलाक्षर) ब्राह्मी लिपिको तृतीय रूप हो । यस

लिपिको लेखनशैली शीर्षचिह्न प्राय: त्रिकोण रूप लेखिने र अक्षरको आकार केही मात्रामा पछिल्तिर ढल्किने गरी लेखिने भएकोले नै यसलाई कुटिला भन्ने नाम दिइयो । यही कुटिलालिपिलाई "विकटाक्षर" पनि भनिन्छ । पुरातत्त्वविद् विद्वान्हरूले सिद्धमातृका लिपि भनेर पनि यसको नवीन नामकरण गरेका छन् । कारण ब्राह्मीलिपिको तृतीय परिवर्तन हुँदाखेरि यस लिपिको आकार प्रकार पूर्णरूपेण अक्षर र मात्रा सुसम्पन्न हुन थालेको हुनाले यसको नाम सिद्धमातृका हुनुपर्छ भन्ने सिद्धान्त स्थिर गरिएको हो ।

यो लिपि वि. सं. ७ तौं शताब्दीको उत्तरार्द्धदेखि १२ ह्रौं शताब्दीसम्म चालू भएको उपलब्ध प्रमाणद्वारा विदित हुन्छ । केही प्रमाणहरू उदाहरणको लागि तल दिइएका छन् :

(१) पाटन सौगलटोलस्थित शिलापत्र सं. ८२ नरेन्द्रदेव राजा ।
(२) पाटन कुम्भेश्वरस्थित उमामहेश्वरको पादपीट लेख सं. १०७ राजा गुणकामदेव ।
(३) पाटन त्यागलटोल स्थित गंचाननीको पादपीठ लेख सं. १३२ राजा रुद्रदेव ।
(४) पशुपति चौगिर्दाभित्रको शिलापत्र सं. १५७ राजा जयदेव (द्वितीय) ।
(५) पाटन यंगुबहाल लोकेशको पादपीठ लेख सं. १८० राजा मानदेव (तृतीय) ।
(६) राष्ट्रिय अभिलेखालयको स्कन्दपुराण (अम्बिकाखण्ड) तालपत्र सं. २३४ ।

## मध्य एशिया लिपि

गुप्त साम्राज्ययुगमा भारतीय लिपिलाई गुप्ताक्षर तथा नेपालको लिच्छविकालमा त्यसैलाई लिच्छविलिपि भन्ने चलन थियो । तिनैताका मध्यएशिया उत्तर भारतीय चीनहिन्दतिर तुखार एवं ऋषिक जातिहरूले स्वीकार गरेको प्राचीन लिपिलाई मध्यएशिया लिपिको नाम कल्पना गरियो तथा त्यसलाई खोतनलिपि भनियो । यो लिपि पनि ब्राह्मीलिपिको द्वितीय रूपको रूपान्तर हो भनी मानिएको छ ।

यस लिपिमा लेखिएका बौद्धग्रन्थको केही प्रकीर्ण तालपत्र राष्ट्रिय अभिलेखालयमा छ । उक्त लिपिको काल अनुमान गर्दा ५ चौं ६ छौं शताब्दी मानिएको छ । उदाहरणार्थ–

(१) रत्नकेतु परिवर्त महायान सूत्र ।
(२) दश भूमीश्वर महायान सूत्र ।

## रञ्जना लिपि

नेपालमा प्रचलित विभिन्न जातीय प्राचीन एवं अर्वाचीन लिपिहरूमा दर्शनीय सुरञ्जित लिपिचाहिँ 'रञ्जना लिपि' हो । यो लिपि नेपालमा मात्र प्रसिद्ध र प्रचलित भएको होइन, परन्तु चीन, जापान, तिब्बत आदि महायान बौद्धदेशपर्यन्त पनि प्रचलित र प्रसिद्ध भएको सुन्दरलिपि हो ।

लिपि विकासक्रम अनुसार रञ्जनालिपि ब्राह्मी, गुप्ता, कुटिलापछि शिलाभिलेख, तालपत्र, नीलपत्र आदिमा लेखिएको देखिन्छ । यो लिपि ११ ह्रौं शताब्दीदेखि १८ ह्रौं शताब्दीसम्म चलेको विदित हुन्छ । यसका केही उदाहरणहरू निम्न प्रकारका छन् –

(१) पाटन जोथाबहालस्थित तेजनरसिंह शाक्यको कारण्डव्यूह महायान सूत्र तालपत्र सं. २ रामपालदेव ।

(२) काठमाडौं कमलाछि टोलस्थित पूर्णहर्ष बज्राचार्यको नीलपत्र उष्णीषविजय धारणी सं. २२० महासामन्त रामदेव ।

(३) रुद्रवर्णमहाविहारस्थित नीलपत्र प्रज्ञापारमिता सं. ३०५ राजा गुणकामदेव ।

(४) स्वयम्भू एवं इचांगुस्थित शिलापत्र सं. ३२० विजयकामदेव ।

(५) राष्ट्रिय अभिलेखालय स्थित नीलपत्र विष्णु धर्मोत्तर सं. ३४० राजा अभयमल्ल ।

(६) हिरण्यवर्ण महाविहार स्थित नीलपत्र प्रज्ञापारमिता सं. ३४५ राजा अभयमल्ल ।

(७) विक्रमशील महाविहारस्थित नीलपत्र लक्षावती प्रज्ञापारमिता ।

(८) कीर्तिपुण्य महाविहारस्थित शिलास्तम्भ सं. ८०७ राजा पार्थिवेन्द्र मल्ल ।

## सप्ताक्षरी कूटाक्षर

रञ्जना लिपिको विकासक्रमको परम्परामा यस सप्ताक्षरी कूटाक्षरको पनि प्रादुर्भाव भएको देखिन्छ । खासगरी यो अक्षर तन्त्र बज्रयानको रहस्यवाद प्रचार भएपछि यस लिपिको पनि सृजना भयो । कारण कुनै आराध्य देवताको र साधन विषयको मन्त्र गोप्य गर्नको लागि सोही मन्त्रका अक्षरहरू एउटै अक्षरको आकार प्रकारमा लेखिने चलन चल्यो । यसरी तन्त्र मन्त्रका रहस्यमय वाक्य एउटै अक्षर जस्तो मिलाई लेखिने तरीकालाई नै कूटाक्षर (मनोग्राम) भन्ने नाम दिइयो ।

यही कूटाक्षरमा लेखिएका विभिन्न प्रकारका मन्त्रहरूमध्ये महायानी बौद्धदेशमा सुप्रसिद्ध भएको जुन कूटाक्षर हो त्यसलाई 'सप्ताक्षरी कूटाक्षर' भन्ने चलन छ। सप्ताक्षरी कूटाक्षरमा (ह क्ष म ल व र यं) भन्ने यी सातवटा अक्षर समाविष्ट भएको पाइन्छ । यसलाई तन्त्रबज्रयानको कथनअनुसार कालचक्र एवं योगाम्बरको आत्मास्वरूप मानिएको छ र साथै सुमेरुको माथि कूटागार एवं बौद्धदर्शनको प्रतीक पनि । अतः यस सप्ताक्षरीलाई उचित सम्मानार्थ बौद्धविश्वासअनुसार विहार, गुम्बा, आगम तथा गुफा आदि पवित्र स्थानमा राखिने गरिआएको छ ।

यही परम्परामा १३ ह्रौं शताब्दीतिर काठमाडौंका राजा अभयमल्लको शासनकालमा नेपालका प्रसिद्ध कलाकार अरनिको चीनसम्राट् कुबलाईखांको निमन्त्रणामा ह्लासा भई चीन गए। त्यहीं समयमा अरनिकोद्वारा निर्माण गर्न लगाइएको परमशान्ति श्वेतचैत्य छ, तथा त्यसै चैत्यको गर्भगृहमा यही सप्ताक्षरी लेखिएको छ। यस कारण सप्ताक्षरी कूटाक्षरको प्रचार सुदूर महान् देश चीनमा समेत पुगेको छ । काठमाडौं उपत्यकाभित्र पनि ठाउँ ठाउँमा यो सप्ताक्षर देखापरेको छ।

यो लिपि १३ ह्रौं शताब्दीदेखि वर्तमान समयसम्म पनि यत्र तत्र कुंदिएको देखिन्छ।

(१) अनुमानित १५ ह्रौं शताब्दीको सप्ताक्षरी स्वयम्भू जंगलको एउटा रूखमुनि शिलामा कुंदिएको छ ।

(२) स्वयम्भूस्थित ने. सं. ८७८ को विशाल शिलापत्रको शिरो भागमा सप्ताक्षरी अङ्कित छ।

(३) हिरण्यवर्ण महाविहारको सुवर्णध्वजको दाहिने देब्रे पार्श्वमा पनि यही सप्ताक्षरी लेख छ।

(४) रत्नाकर महाविहारस्थित धर्मधातुमण्डलमा पुष्पमालार्पित झैं यसले शोभा बढाएको छ ।

(५) पाटन आलुको हिटी सामुन्ने रहेको वि. सं. २०१९ सालको शिलापत्रमा यो अक्षर व्यवहार गरिएको छ ।

## नेवारी लिपि

यस लिपिलाई नेपालका विभिन्न प्रकारका प्राचीन लिपिहरू मध्ये व्यापकरूपमा चलेको र धेरै वर्षसम्म व्यवहार हुंदै आएको सरल एवं सुगम लिपि भन्न सकिन्छ। खासगरी यो लिपि नेवार जातिको भाषाको लिपि मानिएको छ। साँचै भनूँभने हाम्रो प्राचीन साहित्य भण्डार भएको राजकीय पुस्तकालय वीरलाइब्रेरी (राष्ट्रिय अभिलेखालय) को विषयसूची अध्ययन र अनुसन्धान गऱ्यो भने अवश्य ज्ञात हुन्छ कि नेपालमा प्रचलित सम्पूर्ण लिपिमध्येमा धेरै ग्रन्थ लेखिएको यो लिपि सिद्ध हुन आउँछ। यतिमात्र होइन, अन्न शिलापत्र, सुवर्णपत्र, तालपत्र, नीलपत्र, हरितालपत्र, भूजापत्र एवं काष्ठपत्र, इष्टिकापत्र, लोहपत्र आदिमा र पौवाहा, बिलंपति, तुलांपति तथा भाडा बर्त्तनमा समेत नेवारी लिपिका लेख प्राप्त हुन्छन्।

यो लिपि ९ औं शताब्दीदेखि प्रचलन भै वर्तमान २० सौं शताब्दीसम्म पनि यसको चलन छंदै छ। उदाहरणको लागि उपलब्ध प्रमाणहरू निम्न प्रकारका छन् :

(१) राष्ट्रिय अभिलेखालय स्थित लङ्कावतार तालपत्र सं. २८।
(२) पाटन जोथाबाहाल सिद्धिनरसिंह शाक्यको प्रज्ञापारमिता तालपत्र सं. ४० राजा शंकरदेव।
(३) पाटन इलाननी तेजमान शाक्यको प्रज्ञापारमिता तालपत्र सं. १३१ राजा भोजदेव।
(४) पाटन गुईटोल चैत्यको शिलालेख सं. १४४।
(५) " " " " सं. ३६८ राजा अभयमल्ल।
(६) काठमाडौं श्रीघःविहार शिलापत्र सं. १०८७ श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेव ।

## भुजिँमोल लिपि

कुटिल र नेवारी लिपि पछि देखा परेको भुजिमोल लिपि हो। यस भुजिँमोल लिपिका नामैबाट स्पष्ट अर्थ झल्कन्छ। नेवारीमा झिंगालाई 'भुजि' अथवा 'भोजिनी' भन्दछन्,मोलको अर्थ हो टाउको, झिंगाको टाउको जस्तो शीर्षयुक्त लिपि भएको हुनाले भुजिमोल भन्ने स्पष्ट अर्थ बुझिन्छ। यसै शब्दलाई ठीक संस्कृतमा मक्षिमुण्ड लिपि भनिन्छ। हुन पनि नामलाई सुहाउंदो किसिमको यस लिपिमा डिको राख्ने चलन छ। भुजिँमोल लिपि पढ्न धेरै जसो शीर्षतिर ध्यान राखी अध्ययन गर्नुपर्छ नत्र 'ध' र 'प' मा फरक देखिंदैन, त्यस्तै अरू अरू अक्षरमा पनि भ्रम पर्ने संभव छ।

यो लिपि ११ औं शताब्दी देखि १७ औं शताब्दीको पूर्वार्द्धसम्म प्रचलनमा आएको थियो। प्रमाणस्वरूप उदाहरण निम्न प्रकार छन् :

(१) राष्ट्रिय अभिलेखालय स्थित नं. प्र. १००२ विष्णु धर्मोत्तर तालपत्र सं. १६३
(२) राष्ट्रिय पुस्तकालय स्थित योगसार समुच्चय तालपत्र सं. २६१
(३) राष्ट्रिय अभिलेखालयमा रहेको नं. प्र. ४४० को ज्योति राजकरण ने. सं. (७६०) राजा जगज्ज्योति ।

## गोलमोल, लितुमोल, क्वेमोल, कुंमोल हिंमोल, पाचुमोल

प्राचीनकालदेखि भारत एवं हिमालय प्रदेशबाट रहनसहन थितिरीति धेरैजसो प्रवेश भई हाम्रा प्राचीन नेपालका बासिन्दासँग मिले। यिनीहरूको जातीय भाषा, लिपि धर्म एवं समाज स्थानीय नेपाली जनजीवनमा बत्तीमा बत्ती सरे झैं समान-

रूपले आदान–प्रदानको रूपमा व्यवहार भयो । त्यसकारण– काठमाडौं उपत्यकाभित्र देशकाल परिस्थिति परिवर्तन भए झैं हाम्रा राष्ट्रिय प्राचीन लिपि पनि समय समयमा परिवर्तन भएको प्रमाणस्वरूप नेवारी लिपिको रूपान्तर रञ्जना, भुजिंमोल, गोलमोल, लितुमोल, क्वेमोल, कुंमोल हिंमोल एवं पाचुमोल इत्यादि विविध लिपि हाम्रो प्राचीन साहित्यभण्डारमा अतीतका विद्वान्हरूले लिपिबद्ध गरी सुरक्षित गरेर गएका छन् । अनि यी गोलमोल भन्ने संज्ञा दिइएका लिपिहरू आजसम्मको लिपि अनुसन्धानबाट भुजिंमोल लिपि पछि मात्रका हुन् भन्ने बुझिन्छ । किनभने यही भुजिंमोल लिपि विकासक्रमको सिलसिलामा केही कालपछि नेवार समाजका विद्वान्हरूले भुंजिमोल लिपि आविष्कार गरे झैं विशेष पर्वमा त्यही लिपिलाई केही रूपान्तर गरी अलंकारात्मक विविध लिपि प्रादुर्भाव गरिएको विदित हुन्छ । गोलमोल, लितुमोल, क्वेमोल, कुंमोल, हिंमोल एवं पाचुमोल लिपिहरूको अरू अरू लिपिको तुलनामा त्यति प्रचार प्रसार हुन सकेको छैन । गोलमोल (गोलमुण्ड) लिपि भन्नाले शीर्षाकृति चापाकार एवं अक्षर पनि गोलाकार हुन्छन् । लितुमोल (नतमुण्ड) लिपिमा शीर्षरेखा फर्केको वा अङ्ग वक्र हुन्छ । क्वेमोल (परामुण्ड) लिपिको शीर्षरेखा तलतिर फर्केको हुन्छ । कुंमोल (कोणमुण्ड) लिपिको शीर्षचिह्न कोणाकार हुन्छ । हिंमोल (वेष्ठित मुण्ड) लिपिको शिराकृति बेरिएको हुन्छ, यस्तै पाचुमोल (समुण्ड) लिपिको शीर्षभाग सोझो र लिपिको आकार प्रकार पनि सकभर सोझैं गरी लेखिएको हुन्छ । कुनै कुनैको भनाइअनुसार प्राचीन देवनागरी नन्दिनागरी लिपिलाई पनि पाचुमोल भनिन्छ ।

यी लिपिहरू अनुमानित १३ औं शताब्दीदेखि १७ औं शताब्दीसम्म चलेको कुरा ज्ञात हुन्छ ।

(१) केशर–पुस्तकालयस्थित नं. ४० को बृहज्जातक तालपत्रमा उल्लिखित गोलमोल लिपि ने. सं. ३२२ ।
(२) पाटन ज्येष्ठवर्ण महाविहारका ब्रह्मचर्य भिक्षु चैत्यराजको निजी संग्रहमा रहेको तालपत्रमा लेखिएको सारस्वत व्याकरण ने. सं. ५७६ ।
(३) हनुमानढोकास्थित ने. सं. ७७४ मा स्थापना भएको विशाल टुटेधारामा अंकित गोलमोल लिपि ।

## किरात (चन्द्रपुलिङ) लिपि

किरात लिपिको बारे यस्तो वर्णन गरिएको छ । ईसाको नवौं शताब्दीपछि पूर्व नेपालमा किरातवंशी राजाहरू स्वतन्त्र भई परस्परमा युद्ध गर्न थाले । गालिजंगाका नाति शिरिजंगाले स्वतन्त्र भएका सबै राजाहरूलाई आफ्ना अधीनमा तुल्याए । देशमा शान्ति स्थापना भैसकेपछि उनले प्राचीन ग्रन्थहरू एकत्र गरी अर्कै लिपिको आविष्कार गरी किरातदेशमा विद्या प्रचार गरे । यसैले यो लिपिलाई 'शिरिजंगा' लिपि पनि भन्दछन् ।

यस लिपि प्राप्तिको लागि शिरिजंगा राजालाई फोकताङलुङ भन्ने विशाल पहाडको फेदीमा सरस्वतीबाट शिक्षा प्रदान गरिएको वर्णन पनि पाइन्छ ।

यो किरातलिपि विविध राजनैतिक कारणले गर्दा समय समयमा परिलोप भयो र प्रयत्नशील उपयोगी उद्यमी सज्जनहरूको सहयोगबाट यदा कदा यस लिपिको उत्थान पनि भयो । वर्तमान समयमा यो लिपि काठमाडौं उपत्यकामा पनि देखिन थालेको छ ।

पाटन टुण्डिखेलको ठीक एकपाउ दक्षिणनेर टिखेल भन्ने ठाउँमा अवस्थित उमामहेश्वर मन्दिरको पश्चिम लङ्को भित्तामा वि. सं. २०१३ सालको एउटा शिलापत्र देखा परेको छ ।

## तिब्बती लिपि

नेपाल र भारतमा पूर्वलिच्छवि एवं गुप्तलिपि चलेको एकडेढ शताब्दीपछि तिब्बत (ल्हासा) का सम्राट्

स्रोङच्येनग्याल्पोका मंत्री थोन्मिसांबोधले राजाका आज्ञानुसार–आफ्नो देश सभ्य एवं सुसंस्कृत तुल्याउन तिब्बतलिपि बनाए भन्ने कथन छ।

तिब्बतलिपि–पूर्वलिच्छविकै अनुकरण देखिन्छ। निम्नलिखित व्यञ्जन वर्ण दुवैमा समान छन्। हेर्नुस्–[ङ च छ ज ञ त थ न प फ ब म य र ल श स ह]

प्राचीन कालदेखिनै नेपाल र तिब्बतको बीचमा परम्परागत सम्बन्ध रही आएको ज्ञात हुन्छ। तिब्बतका धर्मप्राण–काङग्युर एवं तञ्जुर ग्रन्थहरू अनुवाद गर्ने काममा भारत र नेपालबाट १०८ विद्वान्हरू तिब्बत पुगेकोमा शीलमञ्जु, शान्तिभद्र, अनन्तश्री, संघश्री, लक्ष्मीश्री आदि नेपाली बौद्ध विद्वान्हरू पनि थिए। यसपछि १३ ह्रौं शताब्दीतिर राजा अभय मल्लका समयमा प्रसिद्ध कलाविद् कलाकार अरनिकोको नेतृत्वमा ८० जना कलाकारहरू ल्हासा पुगे। १२२८ ई. मा धर्मस्वामी (चागलोत्सवा) तिब्बतका एक विद्वान् भिक्षुले स्वयम्भूस्थित गुरु रत्नरक्षितसंग शिक्षादीक्षा लिए। यस्तै चौभारनेर रहेका सूर्यासन विहारका आचार्य बज्रभैरूसंग तिब्बती विद्वान् ल्हाङ लोचन्ले बज्रभैरू आदिको अभिषेक प्राप्त गरे। राजा शिवसिंहका पालामा लामा श्यामार्पा एवं राजा जयप्रकाशका समयमा लामा कार्मापाले स्वयम्भू महाचैत्यको जीर्णोद्धार गरे, यस्तै शाह-कालमा पनि ठूलठूला अवतारी लामाहरू आएर स्वयम्भू एवं ज्यारुङखास्योर छोतेन् (बौद्धनाथ) आदि स्थानमा अनेकन् धर्मकीर्ति निर्माण गरे। यसरी तिब्बत र नेपालको बीचमा परम्परादेखि सांस्कृतिक आदानप्रदान भएको कारणले गर्दा काठमाडौं उपत्यका-भित्र यत्र तत्र तिब्बत लिपि उपलब्ध हुनु स्वाभाविकै छ। एकतः अधिराज्यको उत्तरी सिमानामा भोटेहरूको बसोबास पनि छ।

फलस्वरूप राष्ट्रिय अभिलेखालयमा काङग्युर तञ्जुर रिन्छेनतेर्ज्वे नामक धर्मग्रन्थहरू बहुसंख्यामा सुरक्षित छन्।

यो लिपि १२ ह्रौं शताब्दीदेखि लिएर अद्यापि प्रचलित नै छ।

(१) लुम्बिनीस्थित अशोक स्तम्भको उपरिभागमा उल्लिखित अरिमल्ल समयको तिब्बती अक्षर।
(२) हनुमानढोकास्थित टुटेधारामा कुंदिएको राजा प्रतापमल्ल समयको ने. सं. ७७४ को लेख।
(३) स्वयम्भूस्थित विशाल शिलापत्रमा राजा जयप्रकाश मल्ल समयको ने. सं. ८७८ को लेख।
(४) पाटन नागबाहाल दिलको वकाचपालभित्रको शिलापत्र।
(५) गुह्येश्वरी मन्दिरको ने. सं. ६७० को शिलास्तम्भलेख।
(६) स्वयम्भूस्थित कर्मराजविहारको वि. सं. २०१५ को शिलापत्र।

## मैथिली, बंगला, शारदा, उत्कल, तामिल, गुजराती

सुन्दर समशीतोष्ण देश नेपालमा अन्य विविध भारतीय लिपिहरू उपलब्ध भएको कुरामा प्रमाण यस्तो बुझिन्छ। जुन बेला विशाल भारतमा यवनम्लेच्छहरूले प्राचीन शिक्षाकेन्द्र तक्षशिला, वाराणसी, ओदन्तपुरी विक्रमशील तथा नालन्दा, जगद्दलविहार आदि केन्द्रहरू आक्रमण गरेर ध्वस्त गरे, त्यही अवसरमा त्यहांका प्रसिद्ध ज्ञानी–गुणी एवं पण्डित, सिद्ध, आचार्य भिक्षुहरू धेरै संस्कृत प्राकृतिक मागधी भाषाका पुस्तक तथा अनेक कीर्तिवस्तु साथमा लिएर बौद्ध र शैवको समन्वयात्मक देश नेपालमा शरण आए। त्यही समय उत्तर भारतीय लिपि गुप्त, कुटिल, नागरी, काश्मिरी, मैथिली, बंगला आदि र दक्षिण भारतका लिपि पश्चिमी मध्यप्रदेशी तेलगु, कनाडी, ग्रन्थ–कलिंग तथा तामिल, उत्कल, द्रविड इत्यादि लिपिहरू नेपालमा प्रवेश भएको देखिन्छ।

उस बेलादेखि उत्तर एवं दक्षिण भारतका विभिन्न लिपि यत्र तत्र देखिन थाले। उक्त लिपिमा लेखिएका केही प्रमाणहरू यस प्रकार छन्:

(१) राष्ट्रिय अभिलेखालय नं. तृ. ४७१ श्रीमद् भागवत तालपत्र लक्ष्मण संवत् ३६३ को मैथिली लिपि ।

(२) पशुपतिस्थित शिलास्तम्भ ने. सं. ७७७ को मैथिली ।

(३) राष्ट्रिय अभिलेखालयको नं. तृ. ३६३ नागानन्द नाटक तालपत्र ने. सं. ३१३ को बंगलाक्षर ।

(४) महोत्तरी जिल्ला भटही भन्ने ठाउँमा उत्खनन् गर्दा प्राप्त भएको खण्डित विष्णुमूर्तिको छेउमा उत्कीर्ण अनुमानित १३ ह्रौं शताब्दीको उत्कललिपि।

(५) पशुपति राजेश्वरी घाट नवदुर्गामन्दिरको पेटीमा रहेको शिलापत्रमा उल्लिखित तामिल लिपि, ने. सं.५२८।

(६) बालाजु उद्यानको एक कुनामा अवस्थित अनुमानित १७ ह्रौं शताब्दीका तेलगुलिपि अङकित एक शिला स्तम्भ ।

(७) हनुमान ढोकास्थित टुटे धारामा कुंदिएको ने. सं. ७७४ को शारदा काश्मिरी लिपि ।

## प्राचीन देवनागरी

देवनागरीलिपि ब्राह्मीलिपिको विकसित रूप मानिएको छ। देवनागरी लिपिको प्रारम्भिक रूपनै ब्राह्मी लिपि भनिन्छ। लिपि विकासक्रमको सिलसिलामा पछि मात्र देखा परेको देवनागरी लिपिमा कुटिला एवं रञ्जनाको शैली संमिश्रण भएको छ। देवनागरीको शब्दार्थमा विद्वान्हरूको विभिन्न मत छ। कोही भन्दछन् देवताहरूको नगर स्वर्ग हो । स्वर्गबाट मर्त्यमण्डलमा ल्याइएको लिपि देवनागरी हो। 'मन्त्राधीनस्तु देवता' भने झैं उपास्य देवताहरू मन्त्रबाट सृष्टि हुन्छन्। सम्पूर्ण मन्त्रको बीजाक्षर स्वर, व्यञ्जन सिद्ध हुन्छन्। तसर्थ मन्त्राकृति स्वरूप देवनागरी सिद्ध भएको भनिन्छ। आजको संसारमा देवनागरी लिपिको व्यापकरूपमा प्रचार प्रसार भएको छ। वर्तमान नेपालको राष्ट्र भाषाको लिपि देवनागरी लिपिलाई मानिएको छ। यसै देवनागरी लिपिलाई सुन्दरता बढाउँदै लगिएकोले यसलाई 'नन्दिनागरी' पनि भनिन्छ ।

प्राचीन देवनागरी लिपि १० सौं शताब्दीदेखि १५ औं शताब्दीको उत्तरार्द्धसम्मको पाइएको छ। सामान्य देवनागरी लिपि १७ औं देखि अद्यापि प्रचलनमा आइरहेको छ। यसको उदाहरण निम्नप्रकारका छन् :

## प्राचीन देवनागरी लिपि

(१) राष्ट्रिय अभिलेखालयस्थित प्र. ६३४ नं. को सं. १०७६ मा राजा गाङ्गदेवको शासनमा तालपत्रमा उल्लिखित पुस्तक ।

(२) पाटन कुम्भेश्वरस्थित शिलापत्र ने. सं. ५१२ को राजा जयस्थितिमल्लको।

(३) पशुपति चौगिर्दाभित्र रहेको शिलापत्र ने. सं. ५२३ को राजा जयधर्ममल्लको समयको ।

## सामान्य देवनागरी लिपि

(१) पशुपति वासुकी मन्दिरको शिलापत्र ने. सं. ७७४ को राजा प्रतापमल्लको समयको ।

(२) योगनरेन्द्र मल्लको ने. सं. ८२० को मोहर मुद्रामा अङकित लिपि ।

(३) लुम्बिनीस्थित वि. सं. २०२० सालको महेन्द्रस्तम्भको अभिलेखमा अङकित लिपि ।

उपर्युक्त प्राचीन अभिलेखहरू अध्ययन र अनुसन्धान गरी प्रस्तुत पुस्तकमा ब्राह्मी लिपिदेखि वर्तमान प्रचलित नेवारी तथा देवनागरीसमेत गरी २८ प्रकारका लिपिको वर्णमाला प्रस्तुत गरेको छु ।

प्रस्तुत पुस्तकबाट हाम्रा देशका प्राचीन सभ्य संस्कृति धर्म, कला कौशल र ज्ञान विज्ञान आदिका इतिहास र पुरातत्त्व विषयक ज्ञान हासिल गर्न सकून् भन्ने हेतुले इतिहास एवं पुरातत्त्वप्रेमी सज्जनवृन्द र विद्यार्थीहरूको लागि उपयोगी हुने विचार राखी लिपिको संक्षिप्त ऐतिहासिक परिचयसहित विविध प्रकारका लिपिको प्रकाश पाठकको समक्ष प्रस्तुत गरेको छु ।

प्रस्तुत पुस्तकको महत्त्व अन्तरराष्ट्रिय क्षेत्रमा समेत हुन जाओस् तथा अन्तरराष्ट्रका पुरातत्त्वप्रेमी, विद्वान्, अन्वेषक र विद्यार्थीहरूले पनि नेपालको लिपि विकासको परिचय पाऊन् भन्ने उद्देश्यले अक्षरहरूको उच्चारण अंग्रेजीमा पनि समाविष्ट गरिदिएको छु। आशा छ यो मेरो प्रयास उपयुक्त नै ठहर्नेछ ।

यो पुस्तक तयार गर्न तथा प्रकाशन गर्नमा मलाई सतत प्रेरणा एवं प्रोत्साहन दिनुको साथै उदाहरणको रूपमा समाविष्ट गरिएका मूल अभिलेखहरूको प्रतिलिपिसमेत समाविष्ट गर्नमा अमूल्य सुझाउ दिनुहुने ने.रा. प्र.प्र. संस्कृति उपविभाग नं. २ का आयोजक श्री सत्यमोहन जोशीज्यूप्रति हार्दिक कृतज्ञता ज्ञापन गर्दछु । श्री जोशीज्यूकै निर्देशनमा २०१६ सालमा पनि, प्राचीन अभिलेखकै क्रममा नेवारी लिपिको वर्णपरिचय नामक संक्षिप्त पुस्तक श्री ५ को सरकार, पुरातत्त्व र संस्कृति विभागबाट प्रकाशित गर्ने मैले सौभाग्य पाएको थिएँ। नेपालको प्राचीन इतिहास र संस्कृतिको अन्वेषण र अध्ययनमा प्राचीन लिपिको जुन महत्वपूर्ण स्थान रहिआएको छ त्यसमा प्राचीन लिपिको उत्थान र विकास गर्नमा श्री जोशीज्यूले प्रदान गर्नुभएको देन उल्लेखनीय छ ।

अन्त्यमा ने. रा. प्र. प्र. का प्रज्ञा मानार्थ सदस्य वयोवृद्ध इतिहासकार श्री सूर्यविक्रम ज्ञवालीज्यूले पनि यो पुस्तक आद्योपान्त हेर्नुभई यसको प्रकाशनको निमित्त प्रारम्भिक व्यवस्था मिलाई दिनुभएकोमा उहाँप्रति पनि म ज्यादै ऋणी छु ।

विषय ज्यादै पुरानो भए तापनि कार्य नौलो भएकोले यो पुस्तकका सम्बन्धमा पाठक महोदयहरूको तर्फबाट प्राप्त हुने सुझाउ र आलोचना स्वागत गर्दछु।

हेमराज शाक्य

ल. पु. थैना, जोथाबहाल
२०३० फागुन ७ गते

# विषय-सूची

BRAHMI SCRIPT

# ब्राह्मी लिपि

## स्वर

VOWEL



| | | | | | | |
|---|---|---|---|---|---|---|
| अ | आ | इ | उ | ए | ओ | अं |
| A | Ā | I | U | E | O | AṂ |

## व्यञ्जन

CONSONANT



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क | ख | ग | घ | ङ | च | छ | ज | झ | ञ |
| KA | KHA | GA | GHA | ṄA | GHA | CHHA | JA | JHA | ÑA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ट | ठ | ड | ढ | ण | त | थ | द | ध | न |
| ṬA | ṬHA | ḌA | ḌHA | ṆA | TA | THA | DA | DHA | NA |



| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| प | फ | ब | भ | म | य | र | ल | व |
| PA | PHA | BA | BHA | MA | YA | RA | LA | VA |



| | | | | | | |
|---|---|---|---|---|---|---|
| श | ष | स | ह | क्ष | त्र | ज्ञ |
| SHA | SA | SA | HA | KṢA | TRA | JÑA |

LETTER WITH A VOWEL ADDED TO IT

## स्वर संयुक्त वर्ण



| | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| क | का | कि | की | कु | कू | के | कै | को | कौ | कं | क |
| KA | KĀ | KI | KĪ | KU | KŪ | KE | KAI | KO | KAU | KAṂ | KA |

## य संयुक्त व्यञ्जन

CONSONANT WITH YA ADDED TO IT



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क्य | ख्य | ग्य | घ्य | ङ्य | च्य | छ्य | ज्य | झ्य | ञ्य |
| KYA | KHYA | GYA | GHYA | ṄYA | CHYA | CHHYA | JYA | JHYA | ÑYA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ट्य | ठ्य | ड्य | ढ्य | ण्य | त्य | थ्य | द्य | ध्य | न्य |
| ṬYA | ṬHYA | ḌYA | ḌHYA | ṆYA | TYA | THYA | DYA | DHYA | NYA |



| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| प्य | फ्य | ब्य | भ्य | म्य | य्य | र्य | ल्य | व्य |
| PYA | PHYA | BYA | BHYA | MYA | YYA | RYA | LYA | VYA |



| | | | | | | |
|---|---|---|---|---|---|---|
| श्य | ष्य | स्य | ह्य | क्ष्य | त्र्य | ज्ञ्य |
| SHYA | ṢYA | SYA | HYA | KṢYA | TRYA | JÑYA |

CONSONANT WITH RA ADDED TO IT

## र संयुक्त व्यञ्जन



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क्र | ख्र | ग्र | घ्र | ङ्र | च्र | छ्र | ज्र | झ्र | ञ्र |
| KRA | KHRA | GRA | GHRA | NRA | CHRA | CHHRA | JRA | JHRA | ÑRA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ट्र | ठ्र | ड्र | ढ्र | ण्र | त्र | थ्र | द्र | ध्र | न्र |
| ṬRA | ṬHRA | ḌRA | ḌHRA | ṆRA | TRA | THRA | DRA | DHRA | NRA |



| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| प्र | फ्र | ब्र | भ्र | म्र | य्र | र्र | ल्र | व्र |
| PRA | PHRA | BRA | BHRA | MRA | YRA | RRA | LRA | VRA |



| | | | | | | |
|---|---|---|---|---|---|---|
| श्र | ष्र | स्र | ह्र | क्ष्र | त्र | ज्ञ्र |
| SHRA | ṢRA | SRA | HRA | KṢRA | TRA | JÑRA |

## ल संयुक्त व्यञ्जन

CONSONANT WITH LA ADDED TO IT



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क्ल | ख्ल | ग्ल | घ्ल | ङ्ल | च्ल | छ्ल | ज्ल | झ्ल | ञ्ल |
| KLA | KHLA | GLA | GHLA | ṄLA | CHLA | CHHLA | JLA | JHLA | ÑLA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ट्ल | ठ्ल | ड्ल | ढ्ल | ण्ल | त्ल | थ्ल | द्ल | ध्ल | न्ल |
| ṬLA | ṬHLA | ḌLA | ḌHLA | ṆLA | TLA | THLA | DLA | DHLA | NLA |



| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| प्ल | फ्ल | ब्ल | भ्ल | म्ल | य्ल | र्ल | ल्ल | व्ल |
| PLA | PHLA | BLA | BHLA | MLA | YLA | RLA | LLA | VLA |



| | | | | | | |
|---|---|---|---|---|---|---|
| श्ल | ष्ल | स्ल | ह्ल | क्ष्ल | त्र्ल | ज्ञ्ल |
| SHLA | ṢLA | SLA | HLA | KṢLA | TRLA | JÑLA |

## व संयुक्त व्यञ्जन

CONSONANT WITH VA ADDED TO IT



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क्व | ख्व | ग्व | घ्व | ङ्व | च्व | छ्व | ज्व | झ्व | ञ्व |
| KVA | KHVA | GVA | GHVA | ṄVA | CHVA | CHHVA | JVA | JHVA | ÑVA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ट्व | ठ्व | ड्व | ढ्व | ण्व | त्व | थ्व | द्व | ध्व | न्व |
| ṬVA | ṬHVA | ḌVA | ḌHVA | ṆVA | TVA | THVA | DVA | DHVA | NVA |



| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| प्व | फ्व | ब्व | भ्व | म्व | य्व | र्व | ल्व | व्व |
| PVA | PHVA | BVA | BHVA | MVA | YVA | RVA | LVA | VVA |



| | | | | | | |
|---|---|---|---|---|---|---|
| श्व | ष्व | स्व | ह्व | क्ष्व | त्र्व | ज्ञ्व |
| SHVA | ṢVA | SVA | HVA | KṢVA | TRVA | JÑVA |

NUMBERS

## संख्या



१ २ ३ ४ ५ ६ ७ ८ ९

1 2 3 4 5 6 7 8 9



१० २० ३० ४० ५० ६० ७० ८० ९० १००

10 20 30 40 50 60 70 80 90 100

# अभ्यासका निमित्त उदाहरण

## कपिलवस्तुको निग्लीहवा स्थित अशोकस्तम्भको अभिलेख :-



दे वा नं पि ये न पि य द सि न ला जि न चो

DE VĀ NAṂ PI YE NA PI YA DA SI NA LĀ JI NA CHO



द स व सा भि सि ते न बु ध स को ना क म

DA SA VA SĀ BHI SI TE NA BU DHA SA KO NĀ KA MA



न स थु बे दु ति यं व ढि ते वी स ति व सा

NA SA THU BE DU TI YṂ VA ḌHI TE VĪ SA TI VA SĀ



भि सि ते न च अ त न आ गा च म हि यि ते

BHI SI TE NA CHA A TA NA Ā GĀ CHA MA HI YI TE



सि ला वि ग ड भी चा का ला पि त सि ला

SI LĀ VI GA ḌA BHĪ CHĀ KĀ LĀ PI TA SI LĀ



थ भे च उ स पा पि ते

THA BHE CHA U SA PĀ PI TE





(१) निग्लीहवाको– शिलास्तम्भ [ब्राह्मीलिपि]
(२) लुम्बिनीको– शिलास्तम्भ [ब्राह्मीलिपि]

# लुम्बिनी स्थित अशोक स्तम्भको

## अभिलेख



# पूर्वलिच्छवि लिपि

VOWEL

## स्वर



| | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|
| अ | आ | इ | ई | उ | ए | ऐ | ओ | औ | अं | अः |
| A | Ā | I | Ī | U | E | AI | O | AU | AṂ | AH |

## व्यञ्जन

CONSONANT



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क | ख | ग | घ | ङ | च | छ | ज | झ | ञ |
| KA | KHA | GA | GHA | ṄA | CHA | CHHA | JA | JHA | ÑA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ट | ठ | ड | ढ | ण | त | थ | द | ध | न |
| ṬA | ṬHA | ḌA | ḌHA | ṆA | TA | THA | DA | DHA | NA |



| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| प | फ | ब | भ | म | य | र | ल | व |
| PA | PHA | BA | BHA | MA | YA | RA | LA | VA |



| | | | | | | |
|---|---|---|---|---|---|---|
| श | ष | स | ह | क्ष | त्र | ज्ञ: |
| SHA | ṢA | SA | HA | KṢA | TRA | JÑA |

LETTER WITH A VOWEL ADDED TO IT

## स्वर संयुक्त वर्ण

| | | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| क | का | कि | की | कु | कू | कृ | कॄ | के | कै | को | कौ | कं | कः |
| KA | KĀ | KI | KĪ | KU | KŪ | KṚI | KṚĪ | KE | KAI | KO | KAU | KAM | KAH |

## य संयुक्त व्यञ्जन

CONSONANT WITH YA ADDED TO IT

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क्य | ख्य | ग्य | घ्य | ङ्य | च्य | छ्य | ज्य | झ्य | ञ्य |
| KYA | KHYA | GYA | GHYA | ṄYA | CHYA | CHHYA | JYA | JHYA | ÑYA |
| ट्य | ठ्य | ड्य | ढ्य | ण्य | त्य | थ्य | द्य | ध्य | न्य |
| ṬYA | ṬHYA | ḌYA | ḌHYA | ṆYA | TYA | THYA | DYA | DHYA | NYA |
| प्य | फ्य | ब्य | भ्य | म्य | य्य | र्य | ल्य | व्य | |
| PYA | PHYA | BYA | BHYA | MYA | YYA | RYA | LYA | VYA | |
| श्य | ष्य | स्य | ह्य | क्ष्य | त्र्य | ज्ञ्य | | | |
| SHYA | ṢYA | SYA | HYA | KṢYA | TRYA | JÑYA | | | |

## र संयुक्त व्यञ्जन



| क्र | ख्र | ग्र | घ्र | ङ्र | च्र | छ्र | ज्र | झ्र | ञ्र |
|---|---|---|---|---|---|---|---|---|---|
| KRA | KHRA | GRA | GHRA | ṄRA | CHRA | CHHR | JRA | JHRA | ÑRA |



| ट्र | ठ्र | ड्र | ढ्र | ण्र | त्र | थ्र | द्र | ध्र | न्र |
|---|---|---|---|---|---|---|---|---|---|
| ṬRA | ṬHRA | ḌRA | ḌHRA | ṆRA | TRA | THRA | DRA | DHRA | NRA |



| प्र | फ्र | ब्र | भ्र | म्र | य्र | र्र | ल्र | व्र |
|---|---|---|---|---|---|---|---|---|
| PRA | PHRA | BRA | BHRA | MRA | YRA | RRA | LRA | VRA |



| श्र | ष्र | स्र | ह्र | क्ष्र | त्र | ज्ञ्र |
|---|---|---|---|---|---|---|
| SHRA | ṢRA | SRA | HRA | KṢRA | TRA | JÑRA |

## ल संयुक्त व्यञ्जन

CONSONANT WITH LA ADDED TO IT



| क्ल | ख्ल | ग्ल | घ्ल | ङ्ल | च्ल | छ्ल | ज्ल | झ्ल | ञ्ल |
|---|---|---|---|---|---|---|---|---|---|
| KLA | KHLA | GLA | GHLA | ṄLA | CHLA | CHHLA | JLA | JHLA | ÑLA |



| ट्ल | ठ्ल | ड्ल | ढ्ल | ण्ल | त्ल | थ्ल | द्ल | ध्ल | न्ल |
|---|---|---|---|---|---|---|---|---|---|
| ṬLA | ṬHLA | ḌLA | ḌHLA | ṆLA | TLA | THLA | DLA | DHLA | NLA |



| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| प्ल | फ्ल | ब्ल | भ्ल | म्ल | य्ल | र्ल | ल्ल | व्ल |
| PLA | PHLA | BLA | BHLA | MLA | YLA | RLA | LLA | VLA |



| | | | | | | |
|---|---|---|---|---|---|---|
| श्ल | ष्ल | स्ल | ह्ल | क्ष्ल | त्र्ल | ज्ञ्ल |
| SHLA | ṢLA | SLA | HLA | KṢLA | TRLA | JÑLA |

## व संयुक्त व्यञ्जन

CONSONANT WITH VA ADDED TO IT



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क्व | ख्व | ग्व | घ्व | ङ्व | च्व | छ्व | ज्व | झ्व | ञ्व |
| KVA | KHVA | GVA | GHVA | ṄVA | CHVA | CHHVA | JVA | JHVA | ÑVA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ट्व | ठ्व | ड्व | ढ्व | ण्व | त्व | थ्व | द्व | ध्व | न्व |
| ṬVA | ṬHVA | ḌVA | ḌHVA | ṆVA | TVA | THVA | DVA | DHVA | NVA |



| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| प्व | फ्व | ब्व | भ्व | म्व | य्व | र्व | ल्व | व्व |
| PVA | PHVA | BVA | BHVA | MVA | YVA | RVA | LVA | VVA |



| | | | | | | |
|---|---|---|---|---|---|---|
| श्व | ष्व | स्व | ह्व | क्ष्व | त्र्व | ज्ञ्व |
| SHVA | ṢVA | SVA | HVA | KṢVA | TRVA | JÑVA |

# मिश्र वर्ण



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क्न | क्म | न्त | म्ब | र्या | द्भ | क्क | ट्टा | ञ्च | श्च |
| KNA | KMA | NTA | MBA | RYĀ | DBHA | KKA | ṬṬĀ | ÑCHA | SHCHA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ष्ठ | स्थ | ण्ड | र्व्व | र्ग्गु | ङ्क | र्ण्ण | न्त्या | ह्म | ग्ण |
| ṢTHA | STHA | ṆḌA | RVVA | RGGU | ṄKA | RṆṆA | NTYĀ | HMA | GṆA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क्ष्म | क्ष्ण | ष्ण | क्त | क्स | स्त | त्म्य | तृ | ज्झी | ष्क |
| KṢMA | KṢṆA | ṢṆA | KTA | KSA | STA | TMYA | TṚ | JJHĪ | ṢKA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| स्म | द्म | र्च्च | ञ्ज | र्ण्ण | श्री | ज्ञा | म्प | त्न्य | ॐ |
| SMA | DMA | RCHCHA | ÑJA | RṆṆA | SHRĪ | JÑĀ | MPA | TNYA | AUM |



| | | | | | |
|---|---|---|---|---|---|
| ष्णु | शु | ञ्शू | न्स | क्त्य | ज्जा |
| ṢṆU | SHU | ÑSHŪ | NSA | KTYA | JJĀ |



चाङगुको– शिलास्तम्भ [पूर्वलिच्छवि लिपि



चाङ्गुको शिलास्तम्भ [पूर्वलिच्छवि लिपि]



लाजिम्पाट स्थित– शिवलिङ्गमा अङ्कित पादपीठ लेख

[पूर्वलिच्छवि लिपि]



पशुपति चौबाटोमा रहेको– शिलापत्र
[पूर्वलिच्छवि लिपि]




हाडिगाउँको– शिलापत्र
[पूर्वलिच्छवि लिपि]



चितलाङको– शिलापत्र
[पूर्वलिच्छवि लिपि]

# चांगु नारायणस्थित मानदेवको

## स्तम्भाभिलेख



दे वी राज्य व ती तु त स्य नृ प ते र्भा र्य्या भि धा ना स ती
DE VĪ RĀ JYA VA TĪ TU TA SYA NṚI PA TE RBHĀ RYYĀ BHI DHĀ NĀ SA TĪ



श्री रे वा नु ग ता भ वि ष्य ति त दा लो का न्त रा स ङ्गि नी
SHRĪ RE VĀ NU GA TĀ BHA VI ṢYA TI TA DĀ LO KĀ NTA RĀ SA ṄGI NĪ



य स्या ञ्जा त इ हा न व द्य च रि तः श्री मा न दे वो नृ पः
YA SYĀ ÑJA TA I HĀ NA VA DYA CHARI TAH SHRĪ MĀ NA DE VO NṚI PAH



का न्त्या शा र द च न्द्र मा इ व ज ग न्प्र ल्हा द य न्स र्व्व दा
KĀ NTYĀ SHĀ RA DA CHANDRA MĀ I VA JA GA NPRALHĀ DA YA NSARVVA DĀ



प्र त्या ग त्य स ग द्ग दा क्ष र मि द न्दी र्घम् वि नि श्व स्य च
PRA TYĀ GA TYA SA GA DGA DĀ KṢA RA MI DA NDĪ RGAM VI NI SHVASYA CHA

# अभ्यासका निमित्त उदाहरण

राजा मानदेवकी रानी विजयस्वामिनीले स्थापना गरेको पूर्व१नं. पलाञ्चोकमा रहेको विजयश्रीभगवती स्थानको अभिलेख:-



सं व त् फ थ ज मा घ शु क्ल पौ र्ण मा स्या
SAM VA TA 4 2 5 MĀ GHA SHU KLA PAU RNNA MĀ SYĀ



न्दि व स पू र्व्वा यां भ ट्टा र क म हा रा ज श्री मा न
NDI VA SA PŪ RVVĀ YĀM BHA TTĀ RA KA MA HĀ RĀ JA SHRĪ MĀ NA



दे व स्य सा ग्रं व र्ष श त मा ज्ञा प य तः स
DE VA SYA SĀ GRAM VA RṢA SHA TA MĀ JÑĀ PA YA TAH SA



म्रा ड्गृ ह प तेः प त्न्या वि ज य स्वा मि न्या प्र ति
MRĀ DGRI HA PA TEH PA TNYĀ VI JA YA SVĀ MI NYĀ PRA TI



स्था पि ता दे वी भ ग व ती वि ज य श्री:
STHĀ PI TĀ DE VĪ BHA GA VA TĪ VI JA YA SHRĪH



ल.पु. तङ्याल टोलको–शिलापत्र
[पूर्व लिच्छवि लिपि]



आदेश्वर स्थानको शिलापत्र
[पूर्व लिच्छवि लिपि]

# काठमाण्डू स्थित टेबहालका टुँटेधाराको

## शिलाभिलेख



र त्न त्र य म्भ ग व दा र्य्य मु दा र व र्ण्ण

RA TNA TRA YA MBHA GA VA DĀ RYYA MU DĀ RA VA RṆṆA



मु द्धि श्य स त्व प रि भो ग नि मि त्त मे नौ

MU DDI SHYA SA TVA PA RI BHO GA NI MI TTA ME TAU



कू प ञ्ज ल द्रु व णि का ञ्च शु भा य पि त्रो:

KŪ PA ÑJA LA DRA VA ṆI KĀ ÑCHA SHU BHĀ YA PI TROḤ



शा क्यो य ति र्वि हि त वा न्प्रि य पा ल ना मा

SHĀ KYO YA TI RVI HI TA VĀ NPRI YA PĀ LA NĀ MĀ

# उत्तरलिच्छवि (कुटिल) लिपि

## स्वर, व्यञ्जन

VOWEL, CONSONANT



LETTER WITH A VOWEL ADDED TO-IT

## स्वर संयुक्त वर्ण



| क | का | कि | की | कु | कू | कृ | कॄ | के | कै | को | कौ | कं | कः |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| KA | KĀ | KI | KĪ | KU | KŪ | KṚI | KṚĪ | KE | KAI | KO | KAU | KAṂ | KAḤ |

## य संयुक्त व्यञ्जन

CONSONANT WITH YA ADDED TO IT



| क्य | ख्य | ग्य | घ्य | ङ्य | च्य | छ्य | ज्य | झ्य | ञ्य |
|---|---|---|---|---|---|---|---|---|---|
| KYA | KHYA | GYA | GHYA | ṄYA | CHYA | CHHYA | JYA | JHYA | ÑYA |



| ट्य | ठ्य | ड्य | ढ्य | ण्य | त्य | थ्य | द्य | ध्य | न्य |
|---|---|---|---|---|---|---|---|---|---|
| ṬYA | ṬHYA | ḌYA | ḌHYA | ṆYA | TYA | THYA | DYA | DHYA | NYA |



| प्य | फ्य | ब्य | भ्य | म्य | य्य | र्य | ल्य | व्य |
|---|---|---|---|---|---|---|---|---|
| PYA | PHYA | BYA | BHYA | MYA | YYA | RYA | LYA | VYA |



| श्य | ष्य | स्य | ह्य | क्ष्य | त्र्य | ज्ञ्य |
|---|---|---|---|---|---|---|
| SHYA | ṢYA | SYA | HYA | KṢYA | TRYA | JÑYA |

## र संयुक्त व्यञ्जन



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क्र | ख्र | ग्र | घ्र | ङ्र | च्र | छ्र | ज्र | झ्र | ञ्र |
| KRA | KHRA | GRA | GHRA | ṄRA | CHRA | CHHRA | JRA | JHRA | ÑRA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ट्र | ठ्र | ड्र | ढ्र | ण्र | त्र | थ्र | द्र | ध्र | न्र |
| ṬRA | ṬHRA | ḌRA | ḌHRA | ṆRA | TRA | THRA | DRA | DHRA | NRA |



| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| प्र | फ्र | ब्र | भ्र | म्र | य्र | र्र | ल्र | व्र |
| PRA | RHRA | BRA | BHRA | MRA | YRA | RRA | LRA | VRA |



| | | | | | | |
|---|---|---|---|---|---|---|
| श्र | ष्र | स्र | ह्र | क्ष्र | त्र | ज्ञ्र |
| SHRA | ṢRA | SRA | HRA | KṢRA | TRA | JÑRA |

## ल संयुक्त व्यञ्जन

CONSONANT WITH LA ADDED TO IT



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क्ल | ख्ल | ग्ल | घ्ल | ङ्ल | च्ल | छ्ल | ज्ल | झ्ल | ञ्ल |
| KLA | KHLA | GLA | GHLA | ṄLA | CHLA | CHHLA | JLA | JHLA | ÑLN |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ट्ल | ठ्ल | ड्ल | ढ्ल | ण्ल | त्ल | थ्ल | द्ल | ध्ल | न्ल |
| ṬLA | ṬHLA | ḌLA | ḌHLA | ṆLA | TLA | THLA | DLA | DHLA | NLA |



प्ल फ्ल ब्ल भ्ल म्ल य्ल र्ल ल्ल व्ल

PLA PHLA BLA BHLA MLA YLA RLA LLA VLA



श्ल ष्ल स्ल ह्ल क्ष्ल त्र्ल ज्ञ्ल

SHLA ṢLA SLA HLA KṢLA TRLA JÑLA

## व संयुक्त व्यञ्जन

CONSONANT WITH VA ADDED TO IT



क्व ख्व ग्व घ्व ङ्व च्व छ्व ज्व झ्व ञ्व

KVA KHVA GVA GHVA ṄVA CHVA CHHVA JVA JHVA ÑVA



ट्व ठ्व ड्व ढ्व ण्व त्व थ्व द्व ध्व न्व

ṬVA ṬHVA ḌVA ḌHVA ṆVA TVA THVA DVA DHVA NVA



प्व फ्व ब्व भ्व म्व य्व र्व ल्व व्व

PVA PHVA BVA BHVA MVA YVA RVA LVA VVA



श्व ष्व स्व ह्व क्ष्व त्र्व ज्ञ्व

SHVA ṢVA SVA HVA KṢVA TRVA JÑVA

# मिश्रवर्ण



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| क्स | ढ्ढ | क्त | त्स्न | ह्म | ङ्घ | श्च | न्त | ग्ण | क्ष्म |
| KSA | DDHA | KTA | TSNA | HMA | ṄGHA | SHCHA | NTA | GṆA | KṢMA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ड्भ | ष्ट | ड्ग | ष्ण | स्थ | ण्ट | क्ष्ण | श्ल | ज्ज | र्च्य |
| DBHA | ṢṬA | DGA | ṢṆA | STHA | ṆṬA | KṢṆA | SHLA | JJA | RCHYA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| त्क | ञ्ज | ह्न | ह्ल | ह्न्य | स्त | र्य्य | ण्ड | ण्ण | च्छ |
| TKA | ÑJA | HNA | HLA | HNYA | STA | RYYA | ṆḌA | ṆṆA | CHCHHA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| ल्प | त्म्य | न्ध्य | म्भ | म्म | न्द्र | रू | ङ्क | क्क | त्त |
| LPA | TMYA | NDHYA | MBHA | MMA | NDRA | RŪ | ṄKA | KKA | TTA |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| प्त | स्थ | म्र | स्या | ट्ट | ञ्च | न्न | ल्ल | ण्ड | श्री |
| PTA | STHA | MA | SYĀ | ṬṬA | ÑCHA | NNA | LLA | ṆḌA | SHRĪ |



| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| स्म | द्म | च्च | ज्झी | ष्क | प्प | ष्प | ङ्ग | श्र्या | र्य्या |
| SMA | DMA | CHCHA | JJHĪ | ṢKA | PPA | ṢPA | ṄGA | SHRYĀ | RYYĀ |



ल.पु. टङ्गलटोल गैह्रिधाराको– शिलापत्र
[उत्तर लिच्छवि लिपि]

# अभ्यासका निमित्त उदाहरण

## ललितपुर टंगलटोल गेह्निधाराको शिलाभिलेख:-



व्य व हि त म नो भि र्भा व्यं त था चा ह ये प्रा क्त ना व नि भु जां ज ग

VYA VA HI TA MA NO BHI RBHĀ VYAṂ TATHĀ CHĀ HA YE PRĀ KTA NĀ VA NI BHU JĀM JA GA



ती हि ता नां ध र्म्यां स्थि तिं स्थि ति कृ ता म नु पा ल ये यु र्ल क्ष्म्या

TĪ HI TĀ NĀṂ DHA RMYĀṂ STHI TIṂ STHI TI KṚI TĀ MA NU PĀ LA YE YU RLA KṢMYĀ



स मे त्य सु चि र न्नि ज भा र्या ये व प्रे त्या पि वा स व स

SA ME TYA SU CHI RA NNI JA BHĀ RYA YE VA PRE TYĀ PI VĀ SA VA SA



मा दि वि ते व से यु रि ति स्व य मा ज्ञा दू त क श्चा त्र

MĀ DI VI TE VA SE YU RI TI SVA YA MĀ JÑĀ DŪ TA KA SHCHĀ TRA



यु व रा ज श्री वि ज य दे व: संव त् आ ५ ८ पौ ष

YU VA RĀ JA SHRĪ VI JA YA DE VAH SAṂ VA T 2 4 8 PAUṢA



शु क्ल दि वा तृ ती य स्या म् ॥

SHU KLA DI VĀ TṚI TĪ YA SYĀ Ṃ

